# वामी-विश्व सम्पर्क मञ्च, नौमती सांस्कृतिक समिति नियमावली सार्वजनिक

वामी-विश्व सम्पर्क मञ्च, मुल समिति र समन्वय समिति समेतबाट नियमावली अनुमोदन भए लगत्तै वामी-विश्व सम्पर्क मञ्च, नौमती बाजा महोत्सव तथा सांस्कृतिक समितिको सचिवालयमा सांस्कृतिक समिति अध्यक्ष बैकुण्ठ रायमाझी ज्यूको अध्यक्षतामा बसेको अनलाईन बैठकले लिपिबद्ध गरेका महत्वपूर्ण  निर्णयहरुको साथमा साँस्कृतिक समितिका नियमावलीहरु र प्रथम चरणका तीन जना खास दानदाताहरुको व्यक्तिगत विवरण सहित समितिका महासचिव हेमनाथ खराल मार्फत यसरी सार्वजनिक गरिएको छ।

वामी-विश्व सम्पर्क मञ्च, नौमती साँस्किर्तिक आजीवन सदस्य, संरक्षक र विशिष्ट संरक्षकहरुको लागि आकर्षक नीतिनियम र सम्मान को व्यवस्था गरिएको छ ताकि भोलिका दिनहरुमा कार्यक्रम गर्दा आर्थिक समस्या नहोस् र अनन्त कार्यक्रम बगिरहोस्। साथै जसले कार्यक्रमलाई मनै देखि सहयोग गर्छ उहाँहरुको हकमा पनि राम्रो नीतिनियम बन्यो भने सदैव यो सांस्कृतिक संस्थाले राम्रो अभिभावक पाउनु हुनेछ भन्ने मनशायले हामीले यस्तो प्रावधान ल्याएका हौँ।

१. तीनै किसिमका  सदस्यहरुलाई आकर्षक लोगो फ्रेम सहितको फोटो हाम्रो फेसबुक वाल मार्फत सार्वजनिक गर्ने।

२. तीनै किसिमका दानवीरहरुलाई क्रमशः आकर्षक स्वर्णपत्र, ताम्रपत्र र काश्यपत्र  द्वारा सम्मान गरिनेछ।

३. सांस्कृतिक समितिको अधिवेशनमा प्रतिस्पर्धा भएर चुनावमा जानु परेको खण्डमा मूल समिति २० प्रतिशत, समन्वय समिति २० प्रतिशत र सांस्कृतिक आजीवन सदस्य/संरक्षक/विशिष्ट संरक्षकहरुको कुल ६० प्रतिशत अधिकार हुने गरी यो नियमावली बनेको कुरा जानकारी गराइएको छ।

यति भएको खण्डमा संस्थालाई गाडासरी धकेल्नु नपरेर मोटर सरी आफै दौडिन्छ भन्ने हाम्रो ठम्याई हो।

सबै-सबै सम्मानित महानुभाव ज्यूहरु, मुल समितिका पदाधिकारी साथीहरु, समन्वय समितिका दिग्गज विद्वान व्यक्तित्त्वहरु तथा कार्य सम्पादन, स्मारिका प्रकाशन तथा सबै शाखा समितिका सम्पूर्ण पदाधिकारी साथीहरुलाई धन्यवाद दिँदै उहाँहरुको सदैव साथ, सहयोग, सुझाव र शुभेच्छा रही रहनेछ भन्दै सर्वप्रथम तेस्रो नौमती बाजा महोत्सव तथा सांस्कृतिक कार्यक्रम (२०७७/०७/१७-१८ यानी यहि आउँदो कार्तिक १७ र १८ गते) भव्यताका साथ सफल हुने सबैमा अग्रिम शुभकामना व्यक्त गर्दछौँ।

वामी-विश्व सम्पर्क मञ्च, सांस्कृतिक नियमावली तयारी भइसकेर आधिकारिक अनुमोदन सहित पारित भएको जानकारी पनि यसै सूचना मार्फत गराउन चाहन्छौँ।

आदरणीय सम्मानित विश्वभर छरिएर रहनुभएका वामीली साथीहरु,

वामी-विश्व सम्पर्क मञ्च, नौमति बाजा महोत्सव तथा साँस्कृतिक समिति को छलफल ग्रुप, समन्वय समिति र मुल समितिका पदाधिकारीहरुको आधिकारिक ग्रुप वाल तथा सचिवालय सदस्यहरू बिचमा गरिएका विभिन्न अनलाइन बैठकहरुद्वारा पारित धारणा तथा उद्देश्यहरुलाई मध्येनजर गर्दै वामी विश्व सम्पर्क मञ्चको विधान नबाझिने गरी तपसिलका नियमावलीहरु निर्माण गरिएको छ:

१. वामी-विश्व सम्पर्क मञ्चको मूल विधानको भावना र मर्मलाई सम्मान हुने गरी सांस्कृतिक समिति मार्फत सांस्कृतिक कार्यक्रम सन्चालन गरिनेछ।

२. नौमती सांस्कृतिक महोत्सवको अक्षय कोष स्थापना तथा आगामी २०७७ को कार्यक्रम सन्चालनार्थ बजेट संकलनको लागि विभिन्न नयाँ गतिविधिहरू गरिनेछ।

नौमती सांस्कृतिक महोत्सवको छुट्टै कोष तथा बैंक खाता हुनेछ। यस खातामा सांस्कृतिक कार्यक्रम-२०७७ सम्पन्न पश्चात बँचेको कोष (मुल रकम) को ब्याज मात्र अर्को नयाँ सांस्कृतिक समितिहरुले नौमती बाजा महोत्सव तथा साँस्कृतिक कार्यक्रमको लागि  प्रयोग गर्न पाउने अधिकार रहनेछ।

३. सांस्कृतिक समिति-२०७७ का कार्य समिति पदाधिकारी सदस्य लगायतका सबै व्यक्तित्व ज्यूहरुबाट मसलन्द खर्च आदिको लागि स्वेच्छिक रकम उठाउने।

४. कार्यक्रमलाई दीगो र सफलिभुत पार्न निम्नानुसारको व्यवस्था गरिनेछ:

क. वामी-विश्व सम्पर्क मञ्च, नौमती साँस्कृतिक आजीवन विशिष्ट संरक्षक:- रु.१,११,१११ वा सो भन्दा बढी।

ख. वामी-विश्व सम्पर्क मञ्च, नौमती साँस्कृतिक आजीवन संरक्षक:- रु. ५५,५५५/- वा सो भन्दा बढी।

ग. वामी-विश्व सम्पर्क मञ्च, नौमती साँस्कृतिक आजीवन सदस्य:- रु. २२,२२२/- वा सो भन्दा बढी।

माथि उल्लेखित रकम प्रदान गर्नुहुने संस्कृतिप्रेमी व्यक्तित्वहरुलाई क्रमशः गुणस्तरीय फ्रेम सहित स्वर्णाक्षर अंकित कदर पत्र, ताम्राक्षर अंकित कदर पत्र र सिल्भर अंकित कदर पत्रले सम्मान गरिने छ। यस्ता संरक्षकहरुबाट लिइएको रकमबाट कुल पचास प्रतिशत रकम अनिवार्य सांस्कृतिक अक्षय कोषमा राख्नु पर्नेछ।

५. कार्यक्रम भव्यताका साथ सम्पन्न गर्नको लागि र सांस्कृतिक कोष बलियो बनाउन जो कोहि महान सांस्कृतिक मनहरुले रु. ३ लाख भन्दा बढी दिएको खण्डमा हौसला स्वरूप 'डोनर किंग अफ द ईयर' घोषणा गरी नौमती साँस्कृतिक आजीवन विशिष्ट संरक्षकको स्वर्णाक्षर कदरपत्रको साथमा विशेष साँस्कृतिक अवार्ड समेतले विभुषित गरिने छ। त्यस्ता महान दानवीर व्यक्तित्वहरुको स-सम्मान नौमती बाजाका साथमा कार्यक्रम स्थलमा लाने तथा उच्चकोटिको स्वागत सम्मान गरिनेछ।

६. २०७७ को कार्यक्रमका तीन जना ठूला चन्दादाताहरुलाई कार्यक्रम अवधि मै सम्मान गरिनेछ।

७. यसै बर्षको अन्त्य सम्म वामीमा विद्यालय स्तरीय 'मौलिकता की आधुनिकता' शिर्षकमा वक्तृत्वकला/वादविवाद प्रतियोगिता आयोजना गरिनेछ।

८. वामीलाई चिन्ने/वामीले रुचाउने पुराना भाकाहरूको पहिचान गरी वामीली स्वादका पुराना भाकाहरु पनि रेकर्डिङ

गर्दै लगिनेछ।

९. साँस्कृतिक समितिमा दुइजना सल्लाहकार सहित सात जना कार्यकारी सदस्य, एघार सदस्यिय सचिवालय, समावेशी सहभागिता रहने गरी ठुलो सङ्ख्यामा सल्लाहकार तथा सदस्यहरु  रहनेछन्। वामी स्थित सबै युवा क्लब, सबै आमा समूह र सबै विद्यालयबाट एक/एक जना प्रतिनिधिहरु यस साँस्कृतिक समितिमा सहभागी गराई सबै वामिलिको अपनत्व हुने गरी समितिलाई पूर्णता दिने।

१०. साँस्कृतिक संरक्षकहरुमा मुसिकोट नगरपालिकाका नगर प्रमुख, वार्ड नं. ७ र ८ का अध्यक्ष तथा प्रदेश पाँचका माननिय सभाषद सोहि क्षेत्रबाट निर्वाचित भएकोले (पदेन संरक्षक) रहने छन्।

११. सचिवालयले सबै जसो कार्य हरु/निर्णयहरु स्वविवेकले पारित गरेर अघि बढ्न पाउनेछ।

१२. मुल समिति र समन्वय समितिले बेला-बेला दिइरहेको सुझाव र अभिव्यक्तिको भने उच्च सम्मान गरिनेछ।

१३. सूचना तथा सञ्चारको लागि एक जना प्रमुख र एक जना सहयोगीलाई जोडिनेछ।

१४. वामी-विश्व सम्पर्क मञ्च, नौमती साँस्कृतिक आजीवन विशिष्ट संरक्षक, वामी-विश्व सम्पर्क मञ्च, नौमती साँस्कृतिक आजीवन संरक्षक र वामी-विश्व सम्पर्क मञ्च, नौमती साँस्कृतिक आजीवन सदस्य सबैलाई विश्व सम्पर्क मञ्चको भवन निर्माण गर्दा साँस्कृतिक स्तम्भ निर्माण गरी स्तम्भमा उहाँहरुको सम्मान स्वरुप शिलाक्षरमा नाम र रकम समेत लेखिनेछ।

१५. वामी-विश्व सम्पर्क मञ्च, नौमती साँस्कृतिक आजीवन विशिष्ट संरक्षक, आजीवन संरक्षक र आजीवन सदस्यहरु क्रमशः ४, २ र १ पोइन्टको अधिकारले अनन्त काल सम्म साँस्कृतिक समिति गठन वा विघटनको लागि ६० प्रतिशत मतदाताको रुपमा अधिकार सम्पन्न रहिरहने छन् भने मुल समितिमा २० प्रतिशत र समन्वय समितिमा २० प्रतिशत मात्र अधिकार सुनिश्चित हुनेछ।

नियमावली निर्माणमा अमूल्य समय र विज्ञता दिएर भरमग्दुर सहयोग गर्नुहुने आदरणीय व्यक्तित्व प्रा.डा. जिवलाल सापकोटा ज्यूलाई हार्दिक धन्यवाद ज्ञापन गर्दछौं।

वामी-विश्व सम्पर्क मञ्च, नौमती बाजा महोत्सव तथा साँस्कृतिक कार्यक्रम-२०७७ को साथमा साँस्कृतिक अक्षय कोष स्थापना हेतु सँस्कृति प्रेमी वामेलीमनहरु यस गरिमामय साँस्कृतिक सम्वर्द्धन तथा प्रवर्द्धनमा तन, मन, धन, वचन र कर्मले सहयोग गर्न आतुर हुनुहुन्छ।

भर्खरै यस संस्थाका महासचिव हेमनाथ खरालले दक्षिण कोरियाबाट दिएको जानकारी अनुसार साविकको वामी गाविस, वार्ड नं. ७ मा जन्मनु भएका र दुई कार्यकाल सम्म उक्त सात नम्बर वडामा सफल वडा अध्यक्षको रुपमा रहनु भएका, नितान्त समाजसेवी, सम्मानित, शालिन व्यक्तित्व लामिछाने परिवारका पिता पं. लक्ष्मिधर लामिछानेका कान्छा सुपुत्र मनकारी हृदय हुने बर्ष ७८ का भुवन लामिछाने ज्यू स-पत्नी ण कुमारी लामिछाने ज्यू (हाल: भरतपुर म. न. पा.-५, चितवन)  बाट रु. १,११,१११/- धन राशी सहयोग गरेर वामी-विश्व सम्पर्क मञ्च, नौमती साँस्कृतिक आजीवन प्रथम विशिष्ट संरक्षक बन्न सफल हुनु भएको छ। निज महादानी लामिछाने परिवारको सुस्वास्थ्य, दिर्घायु तथा दिगो समृद्धिको कामना गर्दछौं। असाद्धै हँसिला, फराँसिला वयोवृद्ध लामिछाने दम्पतिका छोरी मनकली सापकोटा र छोराहरु चन्द्रहरि लामिछाने, विष्णुहरु लामिछाने, तुलसी लामिछाने र दिपक लामीछाने हुनुहुन्छ। उहाँहरुलाई सदैव यसरी खुसिले खान, रमाएर दिन र हाँसेरै जिउन पुगि रहोस्। यहाँहरुको सपिवारमा भव्य रुपमा सम्मान र सम्बोधनको अपेक्षा राख्दछौं।

यसै क्रममा यस गरिमामय साँस्कृतिक समितिका अध्यक्ष बैकुन्ठ रायमाझी ज्यूले चेक रिपब्लिकबाट दिनुभएको ताजा जानकारी अनुसार मुसिकोट न.पा.-७, वामीटक्सार बजार (वरबोट) स्थायी बसोवास गर्ने श्री सोभाखर सापकोटा ज्यू तथा अप्सरा सापकोटा ज्यूका माइला सुपुत्र हिरामणि सापकोटा (प्रकाश), जो क्यानडा समितिका सम्मानित कोषाध्यक्ष, वामी-विश्व सम्पर्क मञ्चका आजीवन सदस्य र यसै नौमती बाजा महोत्सव तथा साँस्कृतिक समितिका सक्रिय सदस्य हुनुहुन्छ, उहाँले रु. ६१,१६१/- सहयोग गरेर वामी-विश्व सम्पर्क मञ्च, नौमती साँस्कृतिक प्रथम आजीवन संरक्षक बनिसक्नु भएकोछ। ३२ बर्षिय निज सापकोटा ज्यूकी धर्म पत्नी मुना सापकोटा, सन्तानहरु छोरी सलिना सापकोटा र छोरा साहिल सापकोटा रहनुभएको छ। परोपकारी मनका धनी दानवीर निज सापकोटा

परिवारका जीवनका हरेक प्रहर स्वर्णिम बनुन्।

दक्षिण कोरियाबाट महासचिव हेमनाथ खरालले दिएको अर्को सूचना अनुसार साविक वामी गाउँ विकास समिति, वार्ड नं. ७, ठुलाखर्क घैयार निवासी नरबहादुर विश्वकर्मा ज्यू तथा मनरुपा विश्वकर्मा ज्यूका जेष्ठ सुपुत्र, ठुलोखर्क प्राथमिक विद्यालयकी शिक्षिका श्रीमती लिला विश्वकर्मा ज्यूका पतिदेव, वामी विश्व सम्पर्क मञ्चका आजीवन सदस्य तथा वामी-विश्व सम्पर्क मञ्च, दक्षिण कोरियाका सक्रिय सदस्य मनका धनी बर्ष ३७ का श्री धनबहादुर विश्वकर्मा ज्यूले रु. २२,२२२/- रकम सहयोग गरेर साँस्कृतिक प्रथम आजीवन सदस्य बनिसक्नु भएकोछ। उहाँका छोरा अनिल विश्वकर्मा र छोरी आशिका विश्वकर्मा रहनुभएको छ। फराकिलो मनका धनी दानवीर  विश्वकर्मा परिवारमा सुख, शान्ति र अनन्त समृद्धिको लागि कामना गर्दछौँ।

दानवीरहरुले संस्कृति संरक्षण तथा संवर्द्धनका लागि यसरी दिनुभएको सहयोग राशीलाई सही सदुपयोगको लागि तपाईं दानदाता ज्यूहरुमै विशेषाधिकार प्राप्त होस् भन्ने उद्देश्यले हामिले बनाएको नौमती साँस्कृतिक समितिको नियमावलीमा बुँदा नं. १५ जोडेका छौँ। आगामी दिनमा गरिने नव साँस्कृतिक समिति चयन आदिको लागि तपाईं दानदाताहरुको बहुमत प्राप्त हुनु पर्दछ। समितिमा रहेर गलत रबैया तथा सशंकित कृयाकलाप भएको व्यक्तिलाई दानवीरहरुको बहुमत द्वारा साँस्कृतिक कार्य समितिबाट स्वत: निलम्वित बनाउन सकिने प्रावधान राख्नको लागि पहल भइरहेको कुरा पनि यहाँहरु सबैलाई जानकारी गराउन चाहन्छौँ।

जय वामी!

जय जन्मभुमि! जय संस्कृति!

प्रार्थी:

बैकुन्ठ रायमाझी, अध्यक्ष

हेमनाथ खराल, महासचिव

वामी-विश्व सम्पर्क मञ्च, नौमती बाजा महोत्सव तथा साँस्कृतिक समिति परिवार

२०७६ मााघ दुई गते शुभम्।